# 'डिप फेक' को भुमरी



■ अजय शर्मा

के तपाईंले कुनै नेताले अन्य दलको नेतालाई खुलमखुला गाली गरेको भिडियो देख्नु भएको छ ?, कुनै नायिकाको अश्लील भिडियो (पोर्न) हेर्नु भएको छ ?, इन्टरनेटमा कुनै उच्च अधिकारीको पत्याउनै नसक्ने खालको भाषा, हाउभाउ र शैलीको भिडियो भेट्टाउनु भएको छ ?

यदि यस्ता कुरासँग तपाईंको साक्षात्कार भएको छ भने बेलैमा सचेत बन्नुहोस्। यस्ता भिडियो वास्तविक नभएर प्रविधिको प्रयोगबाट पनि निर्माण भएका हुन सक्छन्। त्यसैले यस्ता सामग्री तत्काल सेयर गरेर सनसनी फैलाउनेतर्फ नलागेर यस्ता भिडियोको वास्तविकता पत्ता लगाउने प्रयास गर्नुहोस्।

विश्वमा एआई (आर्टिफिसियल इन्टेलिजेन्स) प्रविधिको विकाससँगै यसका नकारात्मक पक्ष विस्तारै समाजमा देखिन थालेको छ। अहिले प्रविधिको क्षेत्रमा विकास भएका डिप लर्निङ अल्गोरिदम यति धेरै आधुनिक बनिसकेको छ कि तपाईंले डिजिटल दुनियाँमा देख्ने र सुन्ने सामग्री वास्तविकताभन्दा धेरै परका हुन सक्छन्।

डिप लर्निङ तथा एआईको संयोजनले विकास भएको 'डिप फेक' प्रविधिबाट निर्माण भएका भिडियो र तस्बिरलाई हेर्दा कुन वास्तविक हो, कुन नक्कली (फेक) हो भनेर छुट्याउन समस्या पर्न सक्छ। यो प्रविधिले तपाईंको अनुहार अन्य कुनै व्यक्तिको अनुहारसँग साटफेर गरेर मिलाइदिन्छ।

यस्तो प्रविधिको प्रयोग गरेर बनाइएको भिडियो वा अडियो हेर्ने/सुन्नेले कुन सही र कुन गलत हुन् भनेर सजिलै छुट्याउन सक्दैनन्। यस्तो प्रविधिको प्रयोग गरेर जोसुकैले आफूले चाहेको कुरा अन्य कुनै पनि व्यक्तिको मुखबाट भन्न लगाउने, गीत गाउने, नाच्ने, कराउने, रुने, चिच्चाउने, विभिन्न हाउभाउ गर्नेलगायतका कुरा गराउन सक्छन्।






**विश्वमा अहिले प्रसिद्ध व्यक्तिहरूको आवाज प्रयोग गरेर फेक समाचार बनाउने र डिप लर्निङको प्रयोग गरेर व्यक्तिको आवाज कपी गरेर बैङ्किङ ठगी गर्ने घटना बढ्दो छ।**

## 'डिप फेक' भिडियो

'डिप फेक' भिडियो प्रविधि 'डिप लर्निङ' र 'फेस स्वापिङ' सफ्टवेयरको प्रयोग गरेर बनाइने पूर्ण रूपमा नक्कली अडियो/भिडियो हो। यस्तो प्रविधिको प्रयोग गरेर कुनै एक व्यक्तिको अनुहार अर्को भिडियोमा सजिलै साटफेर गर्न सकिन्छ। यस्तो भिडियो हेर्ने जोसुकैलाई साँच्चिकै जस्तो लाग्छ। साइबरविद्का अनुसार यस्तो प्रविधि प्रयोग गरेर बनाइने भिडियो छुट्याउनै नसकिने खालको हुन्छ।

केही समययता यस प्रविधिको दुरुपयोग गर्ने क्रम बढेको छ। कुनै व्यक्तिको चरित्र हत्या गर्न कुत्सित मानसिकता भएका मानिसले यस्तो प्रविधिको सहारा लिने गरेका छन्। मनोरञ्जन तथा अन्य सकारात्मक प्रयोजनका लागि निर्माण गरिएका यस्ता एआई टुलले मानिसलाई चुनौती दिन थालेको स्पष्ट भएको छ।

'डिप फेक' भिडियो प्रविधिको प्रयोगबाट तपाईं आफूलाई मन परेको जुनसुकै चलचित्रको दृश्यमा आफूलाई उतार्न सक्नुहुन्छ। यस प्रविधिबाट निर्माण

भएका सामग्रीमा कसैले पनि नक्कली हो भनेर छुट्ट्याउन सक्दैन।

यस्तै 'डिप फेक' प्रविधिको सहायताले कुनै सार्वजनिक व्यक्तिको आवाजको 'क्लोनिङ' वा कपी गरेर साइबर अपराध गर्ने प्रवृत्तिसमेत बढेर गएको छ। विश्वमा अहिले प्रसिद्ध व्यक्तिहरूको आवाज प्रयोग गरेर फेक समाचार बनाउने र डिप लर्निङको प्रयोग गरेर व्यक्तिको आवाज कपी गरेर बैङ्किङ ठगी गर्ने घटना बढ्दो छ।

यस्तो प्रविधि प्रयोग गरेर नेपालमा समेत बैङ्किङ ठगीका साथै आगामी चुनावी अभियानलाई यस्तो प्रविधिले प्रभावित गर्न सक्ने नेपालका साइबरविद्ले बताएका छन्।

'डिप फेक' भिडियोको पछिल्लो सिकार नायिकहरू बनेका छन्। यस



प्रविधिको दुरुपयोग गरेर नायिकाको अश्लील भिडियो सार्वजनिक भइरहेको छ। यस्ता भिडियो प्रायः सबै भाइरल हुने गरेका छन्। जसका कारण नायिकाको चरित्रमै प्रश्न उठ्ने गरेको छ। यस्ता भिडियोबाट बलिउडका नायिका काजोल अग्रवाल, कट्रिना कैफ र रश्मिका मन्दनालगायत सिकार भएका छन्।

## 'डिप फेक' को इतिहास

वास्तवमा 'डिप फेक' को सुरुवात तस्बिरबाट सुरु भएको

मानिन्छ। सन् १८६० को अमेरिकी गृहयुद्धको समयमा राजनीतिक स्वार्थका लागि राजनीतिज्ञ जोन कलहवनको शरीरमा अब्राहम लिङ्कनको टाउको जोडेर तस्बिर बनाइएको थियो। यही फोटोलाई पहिलो 'फोटो म्यानुपुलेसन' अर्थात् फोटोमा अदलाबदली/छेडछाड भएको मानिन्छ।

यस्तै २० औँ शताब्दीमा सोभियत युनियनका नेता जोसेफ स्टालिनले राजनीतिक हल्ला (प्रोपोगान्डा) फैलाउन 'फोटो म्यानुपुलेसन' को सहयोग लिएको






**छिमेकी देश भारतले नयाँ प्रविधिमा आधारित साइबर अपराध तथा एआई र 'डिप फेक' बाट समाजमा पर्न सक्ने नकारात्मक प्रभावलाई कानुनबाट सम्बोधन गर्न नयाँ कानुन ल्याउने तयारी गरेको छ।**

बताइन्छ। सन् १९४२ मा इटालीका बेनिटो मुसोलिनी घोडा पनि सम्हाल्न नसक्ने रहेछन् भन्ने सर्वसाधारणलाई भान नपरोस् भनेर मुसोलिनी रहेको एक तस्बिरबाट घोडा स्याहार्ने व्यक्तिको तस्बिर मेटाइएको थियो। यसरी विश्वमा तस्बिर छेडछाड गर्ने क्रम बढ्दै गयो। त्यतिबेला तस्बिरलाई तोडमोड गर्ने तथा एक जनाको टाउको, अनुहार अर्कोमा जोड्न, हटाउन वा कुनै कुरा थप्न विज्ञ व्यक्ति चाहिन्थ्यो। यस्तो गर्न निकै खर्चिलो हुन्थ्यो तर त्यति बेलाका ठूला राजनीतिज्ञहरूले राजनीतिक स्वार्थका लागि यस्तो काम विज्ञ व्यक्तिबाट गराउँथे।

यसक्रममा सन् २०१७ मा 'डिप फेक' प्रविधि प्रयोग गरिएको पोर्न भिडियो रेड्डिट नामक वेबसाइटमा भाइरल भयो। त्यसपछि विश्वमा इन्टरनेटका विभिन्न माध्यमबाट नायिका, नेता, चर्चित व्यक्तिका अनुहार पोर्न भिडियोमा जोडेर सार्वजनिक गर्ने क्रम बढ्यो।

सन् २०१९ देखि अहिलेसम्म आउँदा एआईको प्रयोग गरेर 'डिप फेक' भिडियो, अडियोलगायतका विभिन्न सामग्री इन्टरनेटमा जताकतै पाइन थालेका छन्।

नेपालमा केही वर्षयता नागरिक साइबर हमलाको सिकार हुने क्रम बढ्दो छ। यसको कानुनी उपचारका लागि नेपालका विद्यमान कानुन पर्याप्त छैनन्। छिमेकी देश भारतले नयाँ प्रविधिमा आधारित साइबर अपराध तथा एआई र 'डिप फेक' बाट समाजमा पर्न सक्ने नकारात्मक प्रभावलाई कानुनबाट सम्बोधन गर्न नयाँ कानुन ल्याउने तयारी गरेको छ।

त्यसैले छिटोभन्दा छिटो 'डिप फेक' र एआईबाट हुन सक्ने खतरालाई समयमै सम्बोधन गर्न नेपाल सरकारले समेत उचित कानुन निर्माणमा लाग्नुपर्ने देखिन्छ। ■